# गुठी संस्थान घेराउ गर्ने घोषणा






तस्बिरः दिनेश गोले

असन कोथुननीको विवाद उठे पनि समस्या ज्यूँका त्यूँ छ।

गुठी संस्थानले भू–माफियाकै मिलेमतोमा कोथुननीको अशोकवृक्ष महाविहारलाई नष्ट गर्न खोजेका आरोप अभियन्ताहरूले लगाएका छन्।

गुठी संस्थानको 'सम्पदा–विरोधी' कार्यविरुद्ध सङ्घर्षरत अभियन्ताहरूले आगामी भाद्र ११ गते बुधबार बृहत् जुलुससहित गुठी संस्थान घेराउ गर्ने भएका छन्।

असन कोथुननी बचाउ अभियानका संयोजक नमस्ते साय्मिले शुक्रबार असन बजारमै आयोजित एक कार्यक्रममा यस्तो घोषणा गरेका हुन्। सो घेराउ कार्यक्रमसँगै सङ्कलित १५ हजार हस्ताक्षर पनि गुठी संस्थानलाई बुझाइने उनले बताएका छन्।

कोथुननी तथा कमलपोखरी मासेर बनाइएको छायाँदेवी भवनविरुद्ध हस्ताक्षर सङ्कलनको अन्तिम दिन तथा आगामी कार्यक्रम घोषणा कार्यक्रमलाई विभिन्न सम्पदाप्रेमी संघ–संस्थाले पनि साथ दिने प्रतिबद्धता जनाएका छन्।

नेवाः ग्वाहालि पुचः, नाय्खिं बाजा खलः, नेपाल मजदुर किसान पार्टीका महानगर कमिटि, स्टार क्लब, नेवा राष्ट्रिय मुक्ति मोर्चा, सडक विस्तार पीडित सङ्घर्ष समिति, छायाँदेवी कमलपोखरी अभियान, नेपाल राष्ट्रिय पहिचान संरक्षण संयुक्त सङ्घर्ष समितिलगायतका विभिन्न संस्थाले उक्त अभियानप्रति ऐक्यबद्धता जनाएका हुन्।

असनको मापदण्ड आवश्यक – सांसद् भीमसेनदास प्रधान

कार्यक्रममा सम्बोधन गर्दै प्रतिनिधि सभा सदस्य भीमसेनदास प्रधानले जनताको संस्कृतिमा हस्तक्षेप नगर्न सरकारलाई चेतावनी दिए।

‘राजालाई बाँकी नराख्ने जनताले अरूलाई कहाँ बाँकी राख्छ,’ उनले भने, ‘संस्कृति भनेको जनताको हो, यसमा राज्यले हस्तक्षेप गर्नु हुँदैन।’

उनले असनका लागि मापदण्ड बनाउनुपर्नेमा पनि जोड दिए। स्थानीय नेवाः समुदायको कला–संस्कृतिसँग तालमेल मिल्ने खालको स्थानीय मापदण्ड असनवासी स्वयंले बनाउनुपर्ने उनको धारणा छ।

‘सरकार २०० वर्ष पुरानो धरहरा बनाउनेमा केन्द्रित छ,’ उनले प्रश्न गरे, ‘तर ६०० वर्ष पुरानो अशोकवृक्ष महाविहार बनाउने कसले?’

के हो कोथुननी विवाद?

कोथुननीको अशोकवृक्ष महाविहारमा धेरैअघिदेखि १४ घरपरिवार बस्दै आएका छन्। महाविहारको मूल देवता (क्वापाःद्यः)का रूपमा अमिताभ बुद्धको मूर्ति स्थापित छ। उक्त मूर्तिलाई पुरातत्त्व विभागले ५००–६०० वर्ष पुरानो भनी एक प्रतिवेदनमा उल्लेख गरेको छ।

पछि १७३८ सालमा कोथुननीलाई ‘श्री ५ को वायुदेवता गुठी असन’ भनी एक गुठीअन्तर्गत राखियो। उक्त गुठी पहिले राजदरबारले चलाउँथ्यो भने राजतन्त्र सकिएपछि हाल गुठी संस्थानले तैनाथी गुठीका रूपमा चलाउँदै आएको छ।

तर, २०७४ साल भाद्रमा गुठी संस्थानले चाबहिलस्थित वज्रयोगिनी सामान्य बहुउद्देश्यीय प्राइभेट लिमिटेड कम्पनी र धादिङको ज्यामरुङ्ग दरबार बस्ने वायुदेवता गुठीका तालुकदार लिलाविक्रम शाहसँग एउटा सम्झौता ग¥यो। सम्झौताअनुसार २५ वर्षका लागि विहारको घर वज्रयोगिनी सामान्य बहुउद्देश्यीय प्राइभेट लिमिटेड कम्पनीलाई दिइने उल्लेख छ।

यससँगै वर्षौंदेखि घरबहाल तिरेर त्यहाँ बस्दै आएका १४ घरपरिवारलाई त्यहाँबाट उठाउन आदेश दियो गुठी संस्थानले। अनि, ज्यामरुङ्ग दरबारका तालुकदारले त्यहाँ नयाँ घर बनाउन काठमाडौं महानरपालिकाबाट नक्सा पास गराएका छन्, त्यस गुठी घरलाई रैकर जग्गा भनी तोकेर। अझ, त्यस ठाउँमा ‘आयमूलक व्यावसायिक क्रियाकलाप सञ्चालन गर्न’ कम्पनीसँग सम्झौता गरिएको छ।

आपत्मा छन्, १४ घरपरिवार। उनीहरू प्रत्येकसँग गुठी संस्थानले सम्झौता गरेको छ, घरबहाल तिरी त्यहाँ बस्न पाउने भनेर। त्यस सम्झौतामा कहिलेसम्म करार वैधानिक हुने कुरा उल्लेख छैन।

गुठी संस्थानका प्रवक्ता सरोज थपलियाका अनुसार संस्थानको करार सम्झौता ५ वर्षका लागि हुन्छ। त्यसपछि समयअनुसार फेरि अर्को करार हुन्छ, बहाल पुनरावलोकन गर्दै कम्तीमा ५ प्रतिशत वृद्धि हुने गरी।

२०७० फागुन ८ मा बहालवालासँग गरएको सम्झौताको ५ वर्षे म्याद बाँकी हुँदा–हुँदै गुठी संस्थानले अर्को सम्झौता वज्रयोगिनी सामान्य बहुउद्देश्यीय प्राइभेट लिमिटेड कम्पनीसँग, २०७४ सालको भदौ महिनामा, त्यो पनि ‘आयमूलक व्यावसायिक’ प्रयोजनमा लगाउने भनेर।

यसपछि गुठी संस्थानले घर खाली गर्न पठाएको चिठी उनीहरूले बुझ्न मानेनन् र उनीहरूको गुनासो सुन्न तयार भएन, गुठी संस्थान। उल्टै गुठी संस्थानले उक्त महाविहार क्षेत्र एउटा कम्पनीलाई लिजमा भोगचलन गर्न दिएको गुनासो गर्छन्, स्थानीय सजीवरत्न वज्राचार्य।